# जासुसी ऐन, २०१८

लालमोहर र प्रकाशन मिति

२०१८।१२।२९

संशोधन गर्ने ऐन

| | | |
|---|---|---|
| १. | नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ | २०१९।१२।३० |
| २. | न्याय प्रशासन सुधार (पहिलो संशोधन) ऐन, २०३३ | २०३३।४।१० |
| ३. | जासुसी (पहिलो संशोधन) ऐन, २०३५ | २०३५।७।१ |
| ४. | न्याय प्रशासन ऐन, २०४८ | २०४८।२।१६ |

२०१८ सालको ऐन नं. ४९

**जासुसी, खुपिया तथा गुप्तचरको काम गर्ने गराउनेलाई सजाय दिन बनेको ऐन**

प्रस्तावना : ❐नेपालको सुरक्षा कायम राख्न नेपाल को विरुद्ध जासुसी, खुपिया तथा गुप्तचरको काम गर्नबाट रोक्न र त्यस्तो काम गर्ने गराउनेलाई सजाय दिने व्यवस्था गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट ❐नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाइबक्सेकोछ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यस ऐनको नाम "जासुसी ऐन, २०१८" रहेकोछ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ र जहाँसुकै रहे बसेको भए तापनि नेपाली नागरिकहरुलाई समेत लागू हुनेछ ।

(३) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा-

(क) "सैनिक स्थिति" भन्नाले नेपाल को सैनिक शक्ति तालिम मुभमेण्ट समेतलाई जनाउँछ ।

(ख) "सामरिक व्यवस्था" भन्नाले नेपाल स्थित सैनिकहरुको हातहतियार खरखजाना राख्ने ठाउँ त्यस्ता हातहतियार खरखजानाको लगत सामरिक महत्व भएको ठाउँको नक्सा, मोडेल, स्केच, सैनिक कोड पासवर्ड र सैनिकहरुको खटन र तैनाथ समेतलाई जनाउँछ ।

(ग) "आन्तरिक सुरक्षाको व्यवस्था" भन्नाले नेपाल स्थित प्रहरी फोर्सका शक्ति, तालिम, त्यस्तो प्रहरी फोर्सको हातहतियार खरखजानको लगत, प्रहरी कोड र प्रहरी फोर्सको खटन र तैनाथ समेतलाई जनाउँछ ।

---

❐ नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवथित गरी चालू राख्ने ऐन, २०१९ द्वारा संशोधित ।

(घ) "यन्त्र" भन्नाले लेख्ने, सुन्ने र बोल्ने, काममा प्रयोग गरिने र फोटो खिच्ने यन्त्र समेतलाई जनाउँछ ।

(ङ) "सूचना" भन्नाले कुनै किसिमको लिखतद्वारा वा मौखिक रुपमा वा संकेतबाट वा अन्य कुनै यन्त्रबाट समाचार प्रसारित गरिने कार्यलाई सम्झनुपर्छ ।

(च) "सूचित आदेश" भन्नाले नेपाल राजपत्रमा प्रकाशित आदेश सम्झनु पर्छ ।

३. **जासुसी** : (१) कुनै व्यक्तिले नेपाल भित्र वा बाहिर नेपालको हित वा सुरक्षामा कुनै प्रतिकूल प्रभाव पार्ने उद्देश्यले वा कुनै विदेशी राज्यको हितको लागि त्यस्तो विदेशी राष्ट्रबाट कुनै किसिमको प्रलोभन प्राप्त गरी वा नगरी कुनै व्यक्तिलाई सैनिक स्थिति, सामरिक व्यवस्था वा आन्तरिक सुरक्षाको व्यवस्थाको सूचना दिएमा वा सो दिन उद्योग गरेमा वा दुरुत्साहन दिएमा वा त्यस्तो सूचना दिने उद्देश्यले सामाग्री एकत्रित गरेमा वा त्यस्तो सूचना पावस् भन्ने उद्देश्यले कुनै काम कुरा सुलभ पारी दिएमा वा सुलभ पारी दिनेतर्फ उद्योग गरेमा त्यस्तो व्यक्तिले जासुसी कसूर गरेको मानिनेछ ।

(२) कुनै व्यक्तिले नेपाल भित्र वा बाहिर नेपालको हित वा सुरक्षामा कुनै प्रतिकूल प्रभाव पार्ने उद्देश्यले वा कुनै विदेशी राष्ट्रको हितको लागि त्यस्तो विदेशी राष्ट्रबाट कुनै किसिमको प्रलोभन प्राप्त गरी वा नगरी कुनै व्यक्तिलाई नेपाल सरकारको तर्फबाट गोप्य राखिएको कुनै कुटनैतिक लेखोट वा अन्य कुनै गोप्य सरकारी कागजात सम्बन्धी लेखोटको सूचना दिएमा वा सो दिन उद्योग गरेमा वा त्यस्तो सूचना दिन दुरुत्साहन दिएमा त्यस्तो व्यक्तिले जासुसी गरेको मानिनेछ ।

४. **खानतलासी र पक्राउ गर्ने अधिकार** : (१) कुनै व्यक्तिले जासुसी कसूर गरेकोछ र त्यस्तो व्यक्तिसँग सैनिक स्थिति सामरिक व्यवस्था वा आन्तरिक सुरक्षा व्यवस्था सम्बन्धी कुनै किसिमको नोट, प्लान, मोडेल वा स्केच वा नेपाल सरकारको तर्फबाट गोप्य राखिएका कुनै किसिमको सरकारी कागजात सम्बन्धी लेखोट छ भन्ने भरपर्दो शंका लागेमा नेपाल सरकारले त्यस्तो व्यक्तिलाई गिरफतार गर्न वा जुनसुकै समय त्यस्तो व्यक्तिको घर जग्गामा प्रवेश गरी खानतलासी गर्न वा निजको जीउ वा त्यस्तो मालसामान भएको शंका लागेको बाकस, पोको, गुण्टा वा अन्य कुनै मालसामानको खानतलासी गर्न वारेण्ट जारी गर्न सक्नेछ र खानतलासी गर्दा प्राप्त हुन आएको त्यस्तो नोट, प्लान, मोडेल, स्केच वा गोप्य राखिएका सरकारी कागजात सम्बन्धी लेखोट वा जासुसी सम्बन्धी अन्य कुनै मालसामान उपर कब्जा गर्न सक्नेछ ।

तर खानतलासी गर्न पाउने वा कुनै कसूरदारलाई गिरफतार गर्न पाउने वारेण्ट प्राप्त गर्न केही समय लाग्ने भई कसूरदार भागी जाने वा कसूरको सबूद गायब गरिने सम्भावना देखिएमा त्यस कुराको लिखित पर्चा खडा गरी नेपाल सरकारले बिना वारेण्ट त्यस्तो व्यक्तिलाई गिरफतार गर्न वा

जुनसुकै समय पनि त्यस्तो व्यक्तिको घर जग्गा भित्र प्रवेश गरी खानतलासी गर्न वा निजको जीउ वा त्यस्तो मालसामान भएको शंका लागेको वाकस, पोका, गुण्टा वा अन्य कुनै मालसामानको खानतलासी गर्न सक्नेछ र खानतलासी गर्दा प्राप्त हुन आएको त्यस्तो नोट, प्लान, मोडेल, स्केच गोप्य राखिएको सरकारी कागजात सम्बन्धी लेखोट वा जासुसी सम्बन्धी अन्य कुनै मालसामान उपर कब्जा गर्न सक्नेछ ।

(२) जासुसी कसूर गर्ने व्यक्ति कुनै किसिमको सवारीद्वारा भाग्न लागेमा नेपाल सरकारले त्यस्तो सवारी रोक्न वा तोकिएको ठाउँमा उतार्न सक्नेछ ।

५. **जासुसी कसूर गरेको थाहा पाउनेले जनाउ दिनु पर्ने** : जासुसी कसूर गरेको थाहा पाउने प्रत्येक व्यक्तिले नजिकको प्रहरी ठानामा सो कुराको जनाउ दिनु पर्छ ।

*६. **सजाय** : (१)दफा ३ को उपदफा (१) अन्तर्गतको जासुसी कसूर गर्ने व्यक्तिलाई पाँच वर्षदेखि जन्मभर सम्म कैद हुनेछ ।

(२) दफा ३ को उपदफा (२) अन्तर्गतको जासुसी कसूर गर्ने व्यक्तिलाई पाँच वर्षदेखि दश वर्षसम्म कैद हुनेछ ।

(३) जासुसी कसूर गरेको कुरा थाहा पाई दफा ५ बमोजिम जनाउ नदिने व्यक्तिलाई चार वर्षसम्म कैद वा बीसहजार रुपैयाँसम्म जरिवाना वा दुबै सजाय हुनेछ ।

(४) यस दफा बमोजिम कैद वा जरिवानाको सजाय भएको व्यक्ति गैर नेपाली नागरिक भए सो भुक्तान असूल भएपछि नेपाल सरकारले निजलाई नेपाल बाट निष्कासित गर्न सक्नेछ ।

☪७. **मुद्दाको पुर्पक्षको लागि अभियुक्तलाई थुनामा राख्ने** : यस ऐन अन्तर्गत जासुसी कसूरको अभियोग लागेको व्यक्ति मुद्दा हेर्ने अधिकारी समक्ष साबित भयो वा तत्काल प्राप्त सबूद प्रमाणबाट निजले जासुसी कसूर गरेको देखिन आएमा त्यस्तो अभियुक्तलाई थुनामा राखी मुद्दाको पुर्पक्ष गरिनेछ ।

८. **नेपाल सरकार वादी हुने** : यस ऐन अन्तर्गतको मुद्दा सरकार वादी भई हेरिनेछ ।

९. **अख्तियार सुम्पने बारे** : नेपाल सरकारले सूचित आदेशद्वारा दफा ४ अन्तर्गतको सबै वा केही अधिकार अरु कुनै अधिकृत वा अधिकारीद्वारा प्रयोग गर्न पाउने गरी अख्तियार सुम्पन सक्नेछ ।

१०. **अदालतको अधिकार क्षेत्र** : नेपाल सरकारले अधिकार दिएको अदालतमा बाहेक अरु कुनै अदालतमा यस ऐन अन्तर्गतको अपराधमा मुद्दा चल्न सक्दैन र त्यस्तो अदालतको फैसला उपर ☆पुनरावेदन अदालतमा पुनरावेदन लाग्दछ ।

---

* पहिलो संशोधनद्वारा संशोधित ।

११.  **<u>नियम बनाउने अधिकार</u>** : नेपाल सरकारले यो ऐनको उद्देश्य कार्यान्वित गर्न नियमहरु बनाउन सक्नेछ ।

१२.  **<u>अरु ऐन बमोजिम मुद्दा चलाउने अधिकारमा बाधा नपर्ने</u>** : यस ऐन अन्तर्गत सजाय हुने व्यक्तिलाई अरु ऐन बमोजिम बढी सजाय हुने रहेछ भने त्यस्तो व्यक्तिलाई उक्त ऐन अन्तर्गत मुद्दा चलाउन र बढी सजाय दिन यस ऐनले बाधा पुऱ्याउँदैन ।

तर कुनै व्यक्तिलाई एउटै अपराधमा दुई पटक सजाय हुने छैन ।

१३.  ❐ ....... .............. ..........

---

✯ न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।

❐ नेपाल ऐनहरु संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यवथित गरी चालू राख्ने ऐन, २०१९ द्वारा झिकिएको ।

द्रष्टव्य :

१.  नेपाल कानून (संशोधन) ऐन, २०२४ द्वारा रुपान्तर भएका शब्दहरु :-

(क) "अपील" को सट्टा "पुनरावे

(ख) "गजेट" को सट्टा "राजपत्र"

(ग) "अफिसर" को सट्टा "अधिकृत" ।

२.  केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रुपान्तरण गरेको छ :

"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।